# नेपाल बैंक कानून, १९९४

नेपालमा आजसम्म बैंक नभएको हुनाले मुलुकको आर्थिक उन्नतिलाई बाधा र जनतालाई बेसुबिस्ता भइरहेको हुदा सो अभाव पूर्ति हुन गई दुनियालाई सुविस्ता र मुलुकको बढिया हुन जावस भन्ने उद्देश्यले बैंक स्थापित गरी चालु गर्ना निमित्त तल लेखिए बमोजिमको कानून जारी भएको छ.

१ (क) यो कानूनको नाम "नेपाल बैंक कानून" रहेको छ, यो कानून यही नेपाल बैंक लिमिटेडलाई मात्र लाग्ने गरिएको छ.

(ख) यो कानून इश्तिहार जारी भएका मितिदेखि जारी हुने छ.

२ यो कानूनमा लेखिएका, मुख्य मुख्य शब्दहरूको परिभाषा तल लेखिएको छः-

(क) जहाँ जहाँ बैंक भनी लेखिएको छ, त्यसलाई यो कानून बमोजिम स्थापित भएको 'नेपाल बैंक लिमिटेड' सम्झनु पर्छ.

(ख) सञ्चालक समिति - यो बैंकमा मुकर्रर भएका सञ्चालकहरूको समिति.

(ग) डाइरेक्टर जनरल - सञ्चालक समितिको मुख्य कर्मचारी।

(घ) प्रतीत पत्र - एक बैंकले अर्को बैंकका नाममा फलाना मानिसको यति रुपैयाले खामेसम्मको चेकहरू स्वीकार गर्नु भनी लेखेको पत्र.

(ङ) सिक्री जमानी - एकका निमित्त सबै र सबैका निमित्त एक जना जमानी रहेको जमानत.

(च) सिक्युरिटी - कुनै व्यक्तिले कर्जा लिना निमित्त आफ्नो कब्जामा रहेको वा कब्जामा नरहेता पनि आफ्नो पूरा हक भएको नगद, जिन्सी अरू जायज्यथा वा त्यस सम्बन्धी कागजपत्रहरू राखेको धीतो.

(छ) मुद्दती खाता - तोकिएको म्यादसम्म बैंकमा जमा रहनेगरी ग्राहकहरूले राखेका रुपैयाँको हरहिसाब लेखिएको खाता.

(ज) चल्ती खाता - मागेका बखत जैले पनि झिक्न पाउने गरी राखेका रुपैयाँको हरहिसाब लेखिएको खाता.

(झ) बचत खाता - आफ्नो आम्दानीबाट थोढ वहुत बचत भएको धन सञ्चय गरी राख्ना निमित्त बैंकमा राखेका रुपैयाँको हरहिसाब लेखिएको खाता.

(ञ) डिबेञ्चर - कम्पनीको जायज्यथा धीतो वा जमानत राखी लिएका ऋणको तमसुक.

(ट) बिल अफ एक्सचेञ्ज - फलाना मितिमा वा मागेका बखत फलाना मानिस वा यो ली आउने मानिसलाई यति रुपैयाँ दिनू

भनी एक मानिसले अर्को मानिसलाई दस्खत गरी दिएको लेखोट.

(ठ) प्रोमिसरी नोट - यति रुपैयाँ फलाना मितिमा वा मागेका बखत फलानालाई वा उसले दिनू भनेका मानिसलाई दिन्छु भनी वादा गरी लेखी दिएको लेखोट.

३ (क) यो बैंकको नाम " नेपाल बैंक लिमिटेड" रहेको छ.

(ख) बैंकको मुख्य आफिस रहने स्थान - कान्तिपूर, नेपाल.

(ग) यो बैंकको कामकाज, लेनदेन, हरहिसाब र मामला मुकदमा इत्यादि जो गर्नु पर्छ सो सबै बैंककै नाममा चलाउने गरिएको छ.

(घ) यो बैंकको कामलाई ' नेपाल बैंक लिमिटेड' नामको छाप चलाउने गरिएको छ.

४ (क) यो बैंकले शेयर बिक्रिबाट मो.रु.१.००,००,००० एक करोड सम्मको मूलधन उठाउने अधिकार पाएको छ. त्यसमध्ये हाल मो.रु. १०० एक सएका दरले मो.रु.२५,००,००० पचिसलाख सम्मको शेयर बिक्रिमा चढाई उठेको मूलधनबाट काम चलाउने छ. सो मो.रु. २५,००,००० पचीसलाखमा पनि मो.रु. ५,००,००० पाँचलाखको ५००० पाँचहजार

शेयरको शुरुमै पूरा दाम दिनु पर्ने र बाँकी मो.रु. २०,००,००० बीसलाखको २०.००० शेयरका हकमा बैंकको दरकार अनुसार किश्तबन्दीका हिसाबले असूल गर्ने गरिएको छ.

(ख) हाल उठाउने २५,००० पचीसहजार शेयर मध्ये कमसेकम चार खण्डको एकखण्ड शेयर सरकारबाट लिइबक्सने भएको हुँदा बाँकी रहेको शेयर नेपाली ग्राहकहरूले लिन पाउने छन.

(ग) कदाचित हाल उठाउने २५,००० शेयरको मूलधनले बैंकको काम चलाउन मूलधन नपुगी अरू शेयरबाट हदसम्ममा जति चाहिने हुन्छ उति मूलधन उठाउनु पर्दा सो नयाँ उठाएको शेयर साबिक शेयरवालाहरूले लिएसम्म अरूले लिन पाउने छैन.

५ बैंकको मूलधन घटबढ गर्नु पर्दा सञ्चालक समितिले शेयरवालाहरूका साधारण सभामा सो विषयको प्रस्ताव पेश गरी सैकडा ३३ भोटबाट पास भयो भने सो बमोजिम गर्न हुन्छ.

६ हाललाई यो बैंकको शेयर नेपाली रैयत भई जन्मेका वा नेपाली रैयत भएका स्त्री पुरुष बाहेक अरू कसैले खरीद गर्नु र अरू कौने तरहबाट लिनु दिनु गर्नु हुंदैन.

७ गाथ गादी उपर खुद आफू लागेको ठूलो कसुर गरेमा बाहेक हरिने सर्वस्व हुने समेत कौनै कसुरमा पनि यो बैंकको शेयरमा वा बैंकमा डिपोजिट रहेको रुपैयाँ रोक्का, जफत वा हरण केही हुने छैन. जसको नाममा सो शेयर वा डिपोजिट रहेको छ निजैको वा निज पछि निजका हकवालाको पूरा हक कायम राखिने छ. त्यसमा अरू कसैको कौनै तरहको दावा दैया लाग्ने छैन. कदाचित् कसैले बैंकको आफ्नो शेयर वा बैंकमा डिपोजिट राखेको रुपैयाँ नै धीतो जमानत राखी लेनदेन कारवार गरेको रहेछ भने अथवा सरकारको तहविल ह्यासी लिएको रुपैयाँ बैंकमा डिपोजिट राखेको रहेछ भने त्यस्तो अवस्थामा पनि जति शेयर वा डिपोजिट धीतो जमानत राखेको छ उति शेयर, डिपोजिट अथवा जति तहविल म्हासी डिपोजिट राखेको छ उती रुपैयाँसम्म मात्र ऐन बमोजिम अड्डा अदालतबाट भर्नु भराउनु जो गर्नु पर्ने हुन्छ, सो गर्न सक्ने छ.

८ कदाचित् बैंकलाई नोक्सान परी लागेको ऋण बैंकको जायज्यथाबाट भर्नु भराउनु पर्ने हुन गएको पक्षमा सो जायज्यथाबाट खामेदेखि बाहेक नपुगेको ऋण शेयरवालाहरूले आफ्नो घर घरानाबाट तिर्नु पर्ने छैन.

९ शेयर बिक्रिबाट कमसेकम मो.रु. १०.०००.०० जम्मा भए पछि नेपाल कम्पनी कानूनको रीत पुऱ्याई बैंकले काम शुरु गर्न हुन्छ.

१० नेपाल भरमुलुक र विदेशमा समेत बैंकको शाखा, एजेन्सी खोल्नालाई ठाउँ, समयको अनुकूल हेरी सञ्चालक समितिका तजबीजले खोल्न पाउँछ. स्थापित भएका शाखाहरू खारिज गर्नु पर्दा पनि समितिका तजविजले खारिज गर्न हुन्छ.

## सञ्चालक समिति

११ (क) बैंकको रेख देख, बरबन्दोबस्त र कामकाज चलाउनालाई सञ्चालक समिति रहेको छ. शेयरवालाहरूका वार्षिक साधारण सभाबाट हुने काम बाहेक बैंकले गर्नु पर्ने अरू सबै कामहरू सो समितिको रेखदेख र अधीनमा राखी चलाउने गरिएको छ.

(ख) सञ्चालक समितिमा तल लेखिएका सञ्चालकहरू रहने छन्ः-

डाइरेक्टर जनरल }
२ सञ्चालक } सरकार तर्फबाट रहने.

३ सञ्चालक सर्व साधारण शेयरवालाहरूले वार्षिक सभामा रोजने.

१२ डाइरेक्टर जनरल र सञ्चालकहरूलाई तलब भत्ता बैंकका आमदानीबाट दिइने छ.

१३ बैंकको डाइरेक्टर जनरल सञ्चालकहरू ३/३ वर्षसम्म वहाल रहने छन्. त्यसपछि निज डाइरेक्टर जनरल, सञ्चालकहरू फेरि रोजिएन वा भर्ना भएन भने अरू नयाँ मानिसहरू नियत हुने छन्.

१४ कार्यकारणले तोकिएका म्याद अगावै मुकर्रर भएका डाइरेक्टर जनरल र सञ्चालकहरूको बहाल टुट्न गएमा सो खाली भएका ठाउँमा बाँकी म्यादसम्मलाई सञ्चालकहरू सरकारबाट भर्ना हुने छन्. शेयरवालाहरूले रोज्ने सञ्चालकका हकमा भने वार्षिक साधारण सभा नहुन्जेलसम्म मात्र सो भर्ना भएको सञ्चालक बहाल रहन पाउने छ.

१५ डाइरेक्टर जनरल र सञ्चालकहरू ३/३ वर्षसम्म वहाल रहने छन् भनी माथि १३ दफामा लेखिएकोमा शुरूमा एक पटकलाई सरकारतर्फबाट रहने ३ सञ्चालकहरूमा एक र शेयरवालाहरूले रोज्ने सञ्चालकहरू ३ मा १, वर्ष २ सम्म मात्र बहाल राखी निजहरूका ठाउँमा नयाँ सञ्चालक मुकर्रर भयो वा साबिक सञ्चालकहरूनै फेरि मुकर्रर भयो भने निजहरू नियत भएका मिति देखि अर्को ३ वर्षसम्म बहाल रहने छ.

## सञ्चालक समितिको सभा

१६ सञ्चालक समितिको सभा चाहिएका बखत डाइरेक्टर जनरलका तजविजले गरिने छ. कमसे कम ४ जना सञ्चालकहरू जमा नभई समितिको सभा गर्न हुँदैन.

१७ दुई सञ्चालकहरू वा शेयरवालाहरू मध्ये ३० जना मिलि समितिको सभा गर्न मागे भने डाइरेक्टर जनरलले तुरन्त समितिको सभा गर्नु पर्छ; गरेन भने सरकारबाट गर्न लगाउने छन्.

१८ डाइरेक्टर जनरल उपस्थित रहेका बखत निज र निज नरहेका बखत उपस्थित रहेका सञ्चालकहरूले रोजेका सञ्चालक समितिको सभापति हुने छ.

१९ एक सञ्चालकले एक भोट दिन पाउँछ. सभामा पेश भएका कुराहरूको छलफल हुँदा धेरैको जो राय हुन्छ, सो बमोजिम गरिने छ. सञ्चालकहरूको राय बाझिन गई भोट बराबर हुन गएमा डाइरेक्टर जनरलका राय बमोजिम गरिने छ.

## शेयरवालाहरूको साधारण सभा

२० बैंकको साल तमाम भएका ४५ दिन भित्र बैंकको मुख्य आफिसमा वार्षिक साधारण सभा गर्नु पर्छ. अरू विशेष साधारण सभा बखत

बखतमा सञ्चालक समितिका तजविजले वा शेयरवालाहरू मध्ये ५० जवान मिली दरखास्त दिएमा गरिने छ.

२१ साधारण सभामा हरएक शेयरवाला सभामा उपस्थित रहन पाउनेछन्.

२२ साधारण सभा हुँदा बैंकले ६/६ महीनामा पेश गर्नु पर्ने हिसाब, बैंकको काम सम्बन्धी वार्षिक रिपोर्ट, वासलात, सञ्चालक समितिले बाँडन तजविज गरेका मुनाफा, अडिटरको रिपोर्टहरू बारे शेयरवालाहरूले छलफल गर्न पाउने छन्.

## शेयरवालाहरूको भोट

२३ शेयर रजिष्टरमा नाम चढेका शेयरवालाहरू मध्ये पाँच शेयरसम्म लिनेलाई एक भोट र पाँच देखि बढी जतिसुकै शेयर लिनेलाई पनि पूरा पाँच शेयरको एक भोटका दरले उपल्लो तीस भोटसम्म दिने अधिकार मिलेको छ.

२४ लेखिए बमोजिमको भोट आफै हाजीर भई वा प्रतिनिधि द्वारा दिन पाउँछ, प्रतिनिधि मुकर्रर गर्दा शेयरवालाहरू बाहेक अरूलाई मुकर्रर गर्न हुँदैन.

२५ शेयरको किस्ता तलब भएको रुपैयाँ चुक्ता नगरी भोट दिन पाउने छैन.

२६ शेयरवालाहरूले रोजेका सञ्चालकहरूलाई सैकडा ३३ शेयरवालाहरूले विशेष प्रस्ताव द्वारा खारिज गर्न र निजहरूका ठाउँमा अरू प्रतीतका मानिस रोजी मुकर्रर गर्न पाउँछ.

## बैंकको काम

२७ यो बैंकले तल लेखिए बमोजिमका काम कुराहरू गर्ने अख्तियार पाएको छः-

बैंक स्थापित गर्दा लागेको खर्च तिर्ने काम ---------------------१

ब्याज वा विना ब्याजमा सरकार, रैती र विदेशीहरूको रुपैयाँ जिम्मा लिने र निजहरूका नाममा खाता (एकाउन्ट) खोल्ने काम ------ २

तल लेखिएका किसिमको काफी जमानतमा तजवीज बमोजिम रुपैयाँ सर सापट दिने काम -------------------------------------- ३

नेपाल सरकार बृटिश वा अरू विदेशी सरकार जमानत भएको सिक्युरिटी प्रोमिसरी नोट ------------------------------------१

जिन्सीमाल वा जिन्सी माल सम्बन्धी अधिकारपत्र ------------- २

नेपाल कम्पनी कानून बमोजिम रजिष्टर भएका कम्पनीको शेयर वा डिवेञ्चर - ३

सरकारिया रुपैयाँ जिम्मा लिने काम ----------------------- १

नेपाल भरमुलुक र विदेशमा बिल अफ एक्चेञ्ज, चेक हुण्डीद्वारा ठाउँ ठाउँमा रुपैयाँ पठाउने र चलान गर्ने काम --------------- २

सुन, चाँदी, कम्पनीको शेयर, डिबेञ्चर खरीद बिक्री गरी दिने काम --- ३

कम्पनीका शेयरको मुनाफा र प्रोमेसरीनोट, डिबेञ्चरको व्याज असूल उपर गर्ने काम ----------------------------------------- ४

ग्राहकहरुका निमित्त कमिसन एजेन्ट भई गर्ने काम ---------- १९

लिमिटेड कम्पनीको शेयर वा सिक्युरिटीहरुको जिम्मा लिने, दाखिल खारिज गराउने, खरीद बिक्री गरिदिने काम ----------------- १

शेयर वा सिक्युरिटीहरुको व्याज, मुनाफा इत्यादि उठाईदिने काम ---- २

शेयर, सिक्युरिटीहरुबाट उठेको रुपैयाँ नेपाल भरमुलुक र अरु देशमा समेत ठाउँ ठाउँ पठाउने र चलान गर्ने काम ---------- ३

जग्गा जमीन, जायज्यथाको सुप्रबन्ध गर्ने र त्यसको आमदानी असूल उपर गरि दिने काम ------------------------------------- ४

ग्राहकहरुका निमित्त भरमुलुक हिन्दुस्थान र अरु विदेशहरूमा रुपैयाँ भुक्तान दिने पठाउने काम ---------------------------------- ५

बैंकका कर्मचारी नोकरानहरूको तलब दिने र निजहरूका निमित्त पेन्सन वा प्रोभिडेन्टफण्डको बन्दोबस्त गर्ने काम ------------- २०

बैंकमा जमा गर्न ल्याएका रुपैयाँको व्याज दिने र बैंकका शेयरको मुनाफा बाँडने काम -------------------------------------- २१

देश देशावरमा यो नेपाल बैंकको परिचय गराउने र बैंकमा जनताको विश्वास दिलाउने काम ---------------------------- २२

यो बैंक कानून बमोजिम बैंकले गर्नु पर्ने काम कुराहरू गर्नालाई चाहिने सबै बन्दोबस्त गर्ने काम ---------------- २३

२८ देहाय बमोजिमको काम बैंकले गर्न हुँदैनः-

नेपाल बैंक लिमिटेडको शेयर जमानतली कर्जा दिने काम ------ १

एकवर्ष भन्दा बढी भाखामा जग्गा जमीन धीतो ली कर्जा दिने काम ----------- २

गुठीको शेष जमानत ली कर्जा दिने काम ------------------- ३

२९ बैंकको डाइरेक्टर जनरल, सञ्चालक, चीफ मैनेजर, मैनेजर, कर्मचारी, कामदार कारिन्दाहरूलाई सर सापट दिनु पर्दा सञ्चालक सबैको मञ्जुरी ली मात्र दिन हुन्छ.

## शेयर

३० (क) बैंकको शेयर चल सम्पत्ति ठहर्छ.

(ख) बैंक का हरएक शेयरमा सिलसिलेवार नम्बर राखनु पर्छ.

३१ शेयरको संख्या जनाई, बैंकको छाप लागेको प्रमाणपत्रमा जसको नाम लेखिएको छ अथवा नामसारी भएको छ, सोही मानिस शेयरको हकदार ठहर्छ.

३२ तल लेखिए बमोजिम बैंकले शेयरवालाहरूको रजिष्टर किताब खडा गरी राख्नु पर्छः-

तिनपुस्ते नाम ------------------------------ १

वतन --------------------------------------- २

शेयरको सिलसिलेवार नम्बर र संख्या ---------- ३

शेयरमा असूल भएको रुपैयाँ ------------------- ४

शेयरवालाको नाम दर्ता भएको मिति ------------- ५

साबिक शेयरवालाको नाम खारिज भई हाल दर्तावालाका नाममा नामसारी भएको मिती ---------------------- ६

३३ (क) शेयरवालाको नाम दर्ता भएको रजिष्टर किताब बैंकको आफिसमा राखनु पर्छ. यो किताब आफिस खुलेका बखत शेयरवालाहरूले हेर्न पाउछन; त्यसको नकल चाहेमा मो.रु. १ दस्तुर तिरी नकल पनि लिन पाउने छन्.

(ख) शेयरवालाहरूको नाम लेखिएको रजिष्टर किताब सालसालै एक प्रति वार्षिक साधारण सभा भएको ३० दिन भित्र नेपाल कम्पनी कानून बमोजिम कम्पनी रजिष्टर गर्ने अड्डामा पेश गर्नु पर्छ.

## नोक्सानको भरि भराउ बारे

३४ बैंकका सञ्चालक कर्मचारीहरूले पाएको अख्तियार बमोजिम इमानदारी साथ, छलकपट केही नगरी कामकाज गर्दा कदाचित हानी नोक्सान हुन गयो भने त्यस्तो नोक्सानी हुन गएकोमा निनीहरुले नोक्सानी भर्नु पर्ने छैन.

## उपनियम बनाउने अख्तियार

३५ बैंकले तल लेखिएका विषयहरु यस यसमा यति यति रुपैयाँ सम्म लगाउनु भनी सञ्चालक समितीले अवस्थाअनुसार बराबर तोकी दिनु पर्छ. तोकिएको भन्दा बढी रुपैयाँ लगानी गर्‍यो भने चीफ मैनेजरले जवाफ देही गर्नु पर्ने छः-

वर्ष दिनसम्मको भाखामा सुन, चाँदी, जुहारात, बन्धक दिने काममा लगानी गर्ने जम्मा रुपैयाँ ---------------------------------- १

बिल, डिस्काउन्ट गर्ने काममा लगाउने जम्मा रुपैयाँ ---------- २

सिक्री जमानतमा कर्जा दिने जम्मा रुपैयाँ ------------- ३

शिल्प वा कलकारखानाको काममा, जमानत ली सरसापट दिने जम्मा रुपैयाँ ----- ४

मागेका बखत तुरन्तै रुपैयाँ असूल हुने गरी सरसापट दिने काममा लगाउने जम्मा रुपैयाँ ------------------------------------ ५

नेपाल सरकार, वृटिश वा अरु विदेशी सरकार जमानत रहेको सिक्युरिटीमा लगाउने जम्मा रुपैयाँ ---------------- ६

वर्ष दिनसम्मको भाखामा, नोक्सान नहुने जिन्सी माल अचल धन, दृष्टिबन्धक वा भोग बन्धक लिने काममा लगाउने जम्मा रुपैयाँ ७

अरु फुटकर काम काममा लगाउने जम्मा रुपैयाँ ------------- ८

६/६ महिनाको र वार्षिक वासलातमा लेखनु पर्ने व्यहोराहरू ----९

(ख) तल लेखिएका विषयहरूमा चाहिए चाहिएका बखत सञ्चालक समितिका तजविजले उपनियम बनाई प्रकाश गर्ने छन्ः-

शेयरवालाहरूको नाम लेखिने रजिष्टर किताब खडा गर्ने काम ----१

शेयर दाखिल खारिज गर्ने नियम ---------------------- २

साधारण सभा र समितिको सभा गर्ने नियम ---------- ३

बैंकले शेयरवालाहरूलाई दिने सूचनाको नियम ------------ ४

शेयरको प्रमाणपत्र पुरानो भई वा हराई, पराई, त्यसको बदलामा अर्को नयाँ प्रमाणपत्र दिनु पर्दा गर्नु पर्ने कामको नियम ------- ५

बैंकका कर्मचारी, नोकरानहरूको पेन्शन, प्रोभिडेन्टफण्ड सम्बन्धी बन्दोबस्तको काम ------------------------------ ६

डाइरेक्टर जनरल, सञ्चालक, चीफ मैनेजर, मैनेजरहरुका तलब भत्ता शेयरवालाहरूका सभामा पेश गरी पास भए बमोजिम गर्ने काम --७

३६ बैंकका तर्फबाट तर तमसुक, पट्टा, कबुलियत, डिवेञ्चर इत्यादि कागजपत्रहरू गर्नु पर्दा डाइरेक्टर जनरल र सञ्चालकहरू मध्ये कमसेकम एक जनाका सामने सो कागजमा बैंकको छाप लगाई निजहरू र चीफ मैनेजरले समेत सही गर्नु पर्छ. लेखिया बमोजिम रीत नपुगेको कागजपत्र गर्नु गराउनु हुँदैन.

## अडिटर

३७ बैंकको हरहिसाब जाचना निमित्त सरकारबाट भर्ना हुने एक र शेयरवालाहरूले रोजने एक समेत दुई अडिटर रहने छ. शेयरवालाहरूका तर्फबाट रहने अडिटर वार्षिक साधारण सभामा रोजिने छ. अडिटरहरूको तलब पनि सोही सभामा ठेकिने छ.

(क) बैंकका सञ्चालक वा कर्मचारीहरूलाई अडिटर मुकर्रर गर्न हुँदैन; शेयरवालाहरू भने अडिटर हुन पाउँछन्.

(ख) रोजिएका वा भर्ना भएका अडिटरहरू एक वर्षसम्म वहाल रहने छ. सो म्याद भुक्तानभए पछि तिनै अडिटरहरू रोजिए भने निजैहरू लाई फेरी मुकर्रर गर्न हुन्छ.

(ग) शुरुमा यो एक पटकलाई बैंकका दुवै अडिटरहरू सरकारबाट भर्ना हुने छ. त्यस मध्ये शेयरवालाहरूले रोजने अडिटर चाहीं पहिला वार्षिक साधारण सभा नहुनजेलसम्म बहाल रहने छ.

(घ) शेयरवालाहरूले रोजेका अडिटर म्याद भुक्तान नहुंदै खाली हुन गएमा वार्षिक साधारण सभा नहुनजेलसम्मलाई सञ्चालक समितिले भर्ना गर्न हुन्छ.

३८ बैंकका स्याहा, श्रेस्ता, खातावही दुरुस्त रहे नरहेको चेक जाँच गर्ना निमित्त सरकारबाट बखत बखतमा जाँचकी खटिने छ.

(क) अडिटरहरू र सरकारबाट खटिई गएका जाँचकीहरूले मागेका हरहिसाब, खातावही र कागजपत्रहरू बैंकका कर्मचारीहरूले पेश गर्नु पर्छ.

३९ अडिटरले बैंकको स्याहा, श्रेस्ता, हरहिसाब र वासलातको रिपोर्ट दींदा देहायका कुराहरू समेत खोली लेखनु पर्छः-

आफुले सोधनी र कैफियत तलब गरेका कुराहरूको जवाफ, पाए नपाएको र जवाफ पाएकोमा सन्तोषजनक जवाफ आएको छ छैन - ------------------------------ १

पेश भएको वासलात नियम बमोजिम दस्तुर माफिक दुरुस्त छ छैन ------------ २

जाँचिएका स्याहा श्रेस्ता, कागजात र कैफियत तलब भएका कुराहरूबाट बैंकको यथार्थ आर्थिक परिस्थिति जाहेर हुने गरी वासलात बनेको छ छैन सो बारेको पूरा कैफियत लेखने ------- ३

## गोप्य राखनु पर्ने कुरा

४० बैंकका सञ्चालक, चीफमैनेजर, मैनेजर, अडिटर, एजेन्ट, एकाउन्टेन्ट र अरू कर्मचारीहरूले बैंक सम्बन्धी आफुले गरेको वा थाह पाएको कुराहरू सरोकारवाला कर्मचारीहरू बाहेक अरू कसैलाई प्रकाश गर्नु गराउनु हुंदैन. गोप्य राखनु पर्ने, बैंकका कुराहरू निजहरू कसैले प्रकाश गरेको ठहरियो भने बैंकको नोकरीबाट बर्खास्त भई चुक अनुसार अरू सजाय समेत हुनेछ.

## बाधा अडकाउको रिपोर्ट

४१ यस कानून बमोजिम बैंकको काम चलाउँदा बाधा अडकाउ पर्न आएका कुराहरू सच्याउनु पर्ने आवश्यक देखिएमा सो सच्याउना निमित्त सञ्चालक समितिले शेयरवालाहरूको सम्मतिली सरकारमा रिपोर्ट पेश गर्नु पर्छ.

## लिक्विडेशन

४२ कार्यकारणले बैंक खारिज गर्नु पर्ने देखियो भने नेपाल कम्पनी कानून बमोजिम बैंक खारिज गर्नालाई सञ्चालक समितिले शेयरवालाहरूको सम्पति ली सरकारमा जाहेर गर्नु पर्छ. कुनै तरहबाट बैंकको अवस्था सुधरिने भएन भने पनि सरकारबाट इजाजत नली बैंक खारिज गर्नु हुँदैन.

४३ यो कानूनमा सरकार साधनु, जाहेर गर्नु भन्ने लेखिएकोमा साधनु, जाहेर गर्नु पर्दा उद्योग परिषद मार्फत जाहेर गर्नु.

……………………………………………………………………………………

जोरगणेश छापाखाना, कान्तिपुर, नेपालमा मुद्रित .